# नागरिक तथा राजनीतिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय प्रतिज्ञापत्र

**महासभाको १६ डिसेम्वर १९६६ को प्रस्ताव नम्बर २२०० ए (२१) वाट ग्रहण गरी हस्ताक्षर, अनुमोदन र सम्मिलनकाको लागि खुला गरिएको**

**लागू भएको मितिः धारा ४९ अनुसार, २३ मार्च १९७६ तदनुसार १० चैत्र २०३२**

**प्रस्तावना**

प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरु,

संयुक्त राष्ट्र संघको बडापत्रमा उद्घोषण गरिएका सिद्धान्तहरु अनुरुप नैसर्गिक प्रतिष्ठा तथा मानव परिवारका सम्पूर्ण सदस्यहरुको समान तथा अविच्छिन्न अधिकारहरुको मान्यता नै विश्वमा स्वतन्त्रता, न्याय तथा शान्तिको आधारशिला भएको तथ्यलाई विचार गर्दै,

मानिसमा अन्तरनिहित प्रतिष्ठाबाट नै यी अधिकारहरु निःसृत हुने कुरालाई मान्यता दिंदै,

मानव अधिकारको विश्वव्यापी घोषणापत्र अनुसार भय तथा अभावबाट स्वतन्त्रता उपभोग गरिरहेका स्वतन्त्र मानव जातिको आदर्श प्रत्येक व्यक्तिले आफ्ना नागरिक तथा राजनीतिक अधिकारहरुका साथै आर्थिक, सामाजिक तथा साँस्कृतिक अधिकारहरु उपभोग गर्न पाउने अवस्था सृजना गरेमा मात्र प्राप्त गर्न सकिन्छ भन्ने कुरालाई मान्यता दिंदै,

संयुक्त राष्ट्र संघको बडापत्र अन्तर्गत मानव अधिकार तथा स्वतन्त्रताहरुको विश्वव्यापी सम्मान र पालनालाई प्रवर्द्धन गर्ने राष्ट्रहरुको दायित्वलाई विचार गर्दै,

अन्य व्यक्तिहरु तथा आफ्नो समुदाय प्रति व्यक्तिको कर्तव्य भएकाले व्यक्तिसंग यस प्रतिज्ञापत्रमा स्वीकार गरिएका अधिकारको प्रवर्द्धन र पालनाको लागि प्रयत्न गर्ने उत्तरदायित्व भएको कुरा महसुस गर्दै,

देहायका धाराहरुमा सहमत भएका छन्ः

## भाग १

## धारा १

१. सम्पूर्ण जनताहरुलाई आत्मनिर्णयको अधिकार छ । त्यस अधिकारको कारणबाट नै उनीहरु स्वतन्त्रतापूर्वक आफ्नो राजनैतिक हैसियत निर्धारण गरी स्वतन्त्रतापूर्वक आफ्नो आर्थिक, सामाजिक तथा साँस्कृतिक विकासमा लाग्दछन् ।

२. सम्पूर्ण जनताहरुले आपसी फाइदाको सिद्धान्त तथा अन्तर्राष्ट्रिय कानूनमा आधारित अन्तर्राष्ट्रिय आर्थिक सहयोगबाट उत्पन्न कुनै पनि दायित्वमा प्रतिकूल प्रभाव नपारी आफ्नो लक्ष्यका लागि आफ्ना प्राकृतिक सम्पत्ति र स्रोतहरु स्वतन्त्रतापूर्वक उपभोग गर्न सक्ने छन् । कुनै अवस्थामा पनि कुनै पनि जनतालाई आफ्नो जीवन धान्ने उपायबाट वञ्चित गरिने छैन ।

३. गैर स्वशासित तथा न्यास ईलाकाहरुको प्रशासन गर्ने उत्तरदायित्व भएका पक्ष राष्ट्रहरु लगायत प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले आत्मनिर्णयको अधिकारको प्राप्ति प्रवर्द्धन गर्ने र संयुक्त राष्ट्र संघको वडापत्रका व्यवस्थाहरु अनुरुप सो अधिकारको सम्मान गर्नेछन् ।

## भाग २

## धारा २

१. प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरु आफ्ना ईलाका तथा क्षेत्राधिकारभित्र रहेका सबै व्यक्तिहरुलाई जाति, वर्ण, लिंग, भाषा, धर्म, राजनीतिक वा अन्य विचार, राष्ट्रिय वा सामाजिक उत्पत्ति, सम्पत्ति, जन्म वा अन्य हैसियतका आधारमा कुनै पनि प्रकारको भेदभाव विना प्रस्तुत प्रतिज्ञापत्रमा स्वीकृत अधिकारहरुको सम्मान र सुनिश्चितता प्रदान गर्ने प्रतिज्ञा गर्दछन् ।

२. विद्यमान कानूनी वा अन्य उपायहरुबाट व्यवस्था भई नसकेको अवस्थामा प्रस्तुत प्रतिज्ञापत्रको प्रत्येक पक्ष राष्ट्रले आफ्नो संवैधानिक प्रक्रिया र प्रस्तुत प्रतिज्ञापत्रका व्यवस्थाहरु अनुरुप प्रस्तुत प्रतिज्ञापत्रमा स्वीकार गरिएका अधिकारहरुलाई प्रभावकारी बनाउन आवश्यक कानूनी वा अन्य उपायहरु ग्रहण गर्न आवश्यक कदमहरु चाल्ने प्रतिज्ञा गर्दछ ।

३. प्रस्तुत प्रतिज्ञापत्रको प्रत्येक पक्ष राष्ट्रले निम्न कुराको प्रतिज्ञा गर्दछः

(क) सरकारी हैसियतमा काम गर्ने व्यक्तिहरुबाटै उल्लंघन भएको भए तापनि प्रस्तुत प्रतिज्ञापत्रमा स्वीकार गरिएका आफ्ना अधिकार तथा स्वतन्त्रताहरु उल्लंघन भएको कुनै पनि व्यक्तिले प्रभावकारी उपचार पाउने कुरा सुनिश्चित गर्ने,

(ख) त्यस्तो उपचार दावी गर्ने कुनै पनि व्यक्तिको अधिकार सक्षम न्यायिक, प्रशासनिक वा व्यवस्थापकीय अधिकारीहरु वा सो राष्ट्रको कानून प्रणालीबाट व्यवस्था गरिएका अन्य कुनै सक्षम अधिकारीद्वारा निर्धारण गरी पाउने कुरा सुनिश्चित गर्ने र न्यायिक उपचारका संभावनाहरुको विकास गर्ने,

(ग) उपचारहरु प्रदान गरिएमा सक्षम अधिकारीहरुले त्यस्ता उपचारहरु लागू गर्ने कुरा सुनिश्चित गर्ने ।

**धारा ३**

प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले प्रस्तुत प्रतिज्ञापत्रमा उल्लिखित सम्पूर्ण नागरिक तथा राजनीतिक अधिकारहरुकोउपभोग गर्ने पुरुष तथा महिलाको समान अधिकार सुनिश्चित गर्ने प्रतिज्ञा गर्दछन् ।

**धारा ४**

१. राष्ट्रको अस्तित्व खलल पार्ने सार्वजनिक संकट र सोको विद्यमानता आधिकारिक रुपमा घोषणा गरिएको समयमा प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले स्थितिको आकस्मिकताबाट अत्यावश्यक भएको हदसम्म मात्र प्रस्तुत प्रतिज्ञापत्र अन्तर्गतका आफ्ना दायित्वहरु न्यून गर्ने उपायहरु अवलम्वन गर्न सक्नेछन् । तर त्यस्ता उपायहरु अन्तर्राष्ट्रिय कानून अन्तर्गत त्यस्ता राष्ट्रहरुका अन्य दायित्वहरुको प्रतिकूल हुनु हुँदैन र जाति, वर्ण, लिंग, भाषा, धर्म वा सामाजिक उत्पत्तिका आधारमा मात्रै भेदभाव गर्ने कुरा त्यस्ता उपायहरुमा समावेश भएको हुनु हुँदैन ।

२. यो व्यवस्था अन्तर्गत धारा ६, ७, ८ (प्रकरण १ र २), ११, १५, १६ तथा १८ लाई न्यून गर्न पाइने छैन ।

३. न्यून गर्ने अधिकारको उपयोग गर्ने प्रस्तुत प्रतिज्ञापत्रको कुनै पनि पक्ष राष्ट्रले आफूले न्यून गरेका व्यवस्थाहरु र त्यसरी न्यून गर्नु पर्नाका कारणहरुको जानकारी संयुक्त राष्ट्र संघका महासचिव मार्फत तुरुन्त प्रस्तुत प्रतिज्ञापत्रका अन्य पक्ष राष्ट्रहरुलाई दिनेछ । त्यस्तो पक्ष राष्ट्रले आफूले यस्तो न्यूनता अन्त्य गरेको मिति सम्बन्धी अर्को सूचना पनि संयुक्त राष्ट्र संघका महासचिव मार्फत दिनेछ ।

**धारा ५**

१. कुनै पनि राष्ट्र, समूह वा व्यक्तिलाई प्रस्तुत प्रतिज्ञापत्रमा स्वीकार गरिएका कुनै पनि अधिकार वा स्वतन्त्रता नष्ट गर्ने वा ती अधिकारलाई प्रस्तुत प्रतिज्ञापत्रमा व्यवस्था भए भन्दा बढी मात्रामा

सीमित गर्ने उद्देश्य भएको कुनै पनि कृयाकलापमा संलग्न हुने वा काम गर्न पाउने अर्थ आउने गरी प्रस्तुत प्रतिज्ञापत्रमा उल्लिखित कुनै पनि कुराको व्याख्या गर्न सकिने छैन ।

२. प्रस्तुत प्रतिज्ञापत्रले यस्ता अधिकारहरु स्वीकार गर्दैन वा तिनलाई कम मात्रामा स्वीकार गर्दछ भन्ने वहानामा कानून, महासन्धिहरु, नियमहरु वा परम्पराका आधारमा प्रस्तुत प्रतिज्ञापत्रको कुनै पनि पक्ष राष्ट्रमा स्वीकार गरिएका वा विद्यमान रहेका कुनै पनि मौलिक मानव अधिकार उपरको कुनै पनि नियन्त्रण वा सोको कुनै पनि न्यूनतालाई स्वीकार गरिनेछैन ।

**भाग ३**

**धारा ६**

१. प्रत्येक व्यक्तिलाई जीवनको अन्तरनिहित अधिकार छ । कानूनद्वारा यस अधिकारको संरक्षण गरिनेछ। स्वेच्छाचारी रुपले कसैको पनि जीवन हरण गरिने छैन ।

२. मृत्युदण्डको उन्मूलन नगरेका देशहरुमा, अपराध गर्दाको समयमा लागू रहेको कानून अनुसार र प्रस्तुत प्रतिज्ञापत्रका व्यवस्थाहरु तथा जाती हत्या अपराधको रोकथाम तथा सजाय सम्बन्धी महासन्धिका व्यवस्थाहरु विपरित नहुने गरी ज्यादै गम्भिर अपराधहरुमा मात्रै मृत्युदण्ड दिन सकिनेछ । सक्षम अदालतले गरेको अन्तिम निर्णय अनुसार मात्रै यस्तो दण्ड कार्यान्वयन गर्न सकिनेछ ।

३. जीवनहरण जाति हत्याको अपराध मानिने अवस्थामा, यस धारामा उल्लिखित कुनै पनि कुराले प्रस्तुत प्रतिज्ञापत्रको कुनै पनि पक्ष राष्ट्रलाई जाति हत्या अपराधको रोकथाम तथा सजाय सम्बन्धी महासन्धि अन्तर्गत ग्रहण गरिएको कुनै पनि दायित्वलाई कुनै पनि किसिमले न्यून गर्ने अधिकार प्रदान गर्ने छैन भन्ने कुरा बुझिन्छ ।

४. मृत्युदण्डको सजाय पाएको कुनै पनि व्यक्तिलाई सजायबाट माफी वा दण्ड कटौतिको माग गर्ने अधिकार हुनेछ । सबै मुद्दाहरुमा माफी दिन, क्षमादान दिन वा मृत्युदण्डको सजायलाई कम गर्न सकिनेछ ।

५. अठार वर्ष मुनिका व्यक्तिबाट गरिएको अपराधमा मृत्यूदण्ड दिईने छैन तथा गर्भवती महिलाहरु उपर यस्तो दण्ड कार्यान्वयन गरिने छैन ।

६. प्रस्तुत प्रतिज्ञापत्रको कुनै पनि पक्ष राष्ट्रले मृत्यूदण्ड उन्मूलनमा विलम्व गर्न वा त्यस्तो उन्मूलनमा रोक लगाउन यस धाराको कुनै पनि कुराको आधार लिन पाउने छैन ।

**धारा ७**

कसैलाई पनि यातना दिइने वा क्रूर, अमानवीय वा अपमानजनक व्यवहार वा सजाय गरिने छैन । खासगरी, कसैलाई पनि निजको स्वतन्त्र मञ्जुरी विना चिकित्सकीय वा वैज्ञानिक प्रयोग भोग्न लगाइने छैन ।

**धारा ८**

१. कसैलाई पनि दासत्वमा राखिने छैन, सबै किसिमका दासत्व तथा दास व्यापारलाई निषेध गरिनेछ ।

२. कसैलाई पनि चाकरीमा राखिने छैन ।

३. (क) कसैलाई पनि बलपूर्वक वा अनिवार्य श्रम गर्न लगाईने छैन,

(ख) कुनै अपराधको दण्ड सजायका रुपमा कठोर श्रम सहितको कैद लागू गर्न सकिने देशहरुमा सक्षम अदालतले निर्णय गरेको दण्ड कार्यान्वयन गर्ने क्रममा कठोर श्रम गराउन प्रकरण ३ (क) ले रोक लगाएको मानिने छैन,

(ग) यस प्रकरणको उद्देश्यको लागि "बलपूर्वक वा अनिवार्य श्रम" भन्ने शब्दले निम्न कुरा जनाउने छैनः

(१) अदालतको कानूनी आदेशले थुनामा रहेको कुनै पनि व्यक्तिले गर्नुपर्ने वा यस्तो थुनाबाट सशर्त छुटेको व्यक्तिले सो अवधिभर साधारणतया गर्नुपर्ने उपप्रकरण (ख) मा उल्लेख नगरिएको कुनै काम वा सेवा,

(२) सैनिक चरित्रको कुनै सेवा वा चेतनागत विरोध स्वीकार गरिएका देशहरुमा, चेतनागत विरोधकर्ताहरुले कानून बमोजिम गर्नुपर्ने कुनै राष्ट्रिय सेवा,

(३) समुदायको जीवन वा कल्याणलाई खतरा पुऱ्याउने संकटकालिन अवस्था वा प्रकोपका समयमा बलपूर्वक लिइएको कुनै सेवा

(४) सामान्य नागरिक दायित्वको अंगको रुपमा रहेको कुनै काम वा सेवा ।

### धारा ९

१. प्रत्येक व्यक्तिलाई स्वतन्त्रता तथा सुरक्षाको अधिकार छ । कसैलाई पनि स्वेच्छाचारी रुपले पक्राउ गर्न वा थुनामा राख्न पाईने छैन । कानूनबाट निर्धारित आधारमा वा कार्यविधि बमोजिम बाहेक कसैको वैयक्तिक स्वतन्त्रताको अपहरण गरिने छैन ।

२. पक्राउ गरिएको व्यक्तिलाई पक्राउ गर्ने समयमा निजलाई पक्राउ गरेको कारण सहितको सूचना दिईने र निज विरुद्ध लगाइएको आरोपको जानकारी तुरुन्त दिईनेछ।

३. कुनै फौजदारी अभियोगमा पक्राउ गरिएको वा थुनिएको कुनै पनि व्यक्तिलाई न्यायाधिश वा कानूनद्वारा न्यायिक शक्ति प्रयोग गर्न पाउने अधिकार प्राप्त अधिकारी समक्ष तुरुन्त उपस्थित गराईनेछ र त्यस्तो व्यक्तिलाई मुनासिव समयभित्र सुनुवाई गरि पाउने वा छुट्कारा पाउने अधिकार हुनेछ । सुनुवाईको अवसर पर्खिरहेका व्यक्तिलाई थुन्नु सामान्य नियम हुने छैन तर निजको रिहाई भने न्यायिक कारवाहीको अन्य कुनै पनि चरणको सुनुवाईमा उपस्थित हुने जमानत र अवस्था उत्पन्न भएमा फैसला कार्यान्वयन गर्नको लागि जमानत धरौटीको अधिनमा रहन सक्नेछ।

४. पक्राउ वा थुनाबाट स्वतन्त्रता अपहरण गरिएको कुनै पनि व्यक्तिले कुनै अदालत समक्ष कारवाही थालनी गर्न पाउनेछ ताकि सो अदालतले विलम्ब नगरी निजको थुनाको वैधताको सम्बन्धमा निर्णय गर्न र थुना कानूनी नभएमा निजलाई रिहाई गर्न आदेश दिन सकोस ।

५. गैर कानूनी पक्राउ वा थुनाबाट पीडित भएको कुनै पनि व्यक्तिलाई कार्यान्वयन गर्न सकिने क्षतिपूर्तिको अधिकार हुनेछ।

### धारा १०

१. स्वतन्त्रताको अपहरण गरिएका सबै व्यक्तिहरुलाई मानवीय रुपले तथा मानिसको अन्तरनिहित प्रतिष्ठा प्रति सम्मान गर्ने किसिमले व्यवहार गरिनेछ ।

२. (क) अपवादजनक परिस्थितिहरुमा बाहेक अभियुक्तहरुलाई अपराधीहरु (सजाय पाएका व्यक्तिहरु) बाट अलग राखिने र सजाय नपाएका व्यक्तिहरुको हैसियतले तिनीहरुको अवस्था सुहाउदो पृथक व्यवहार गरिनेछ।

(ख) बाल अभियुक्तहरुलाई वयस्कहरुबाट अलग राखिने र जतिसक्दो चाँडो तिनीहरुको मुद्दा छिन्न लगाईनेछ ।

३. बन्दी सुधार प्रणालीमा कैदीहरुको सुधार तथा सामाजिक पुनर्स्थापना प्रमुख उद्देश्य भएको उनीहरु प्रतिको व्यबहार समावेश हुनेछ । बाल अपराधीहरुलाई वयस्कहरुबाट अलग राखिने र उनीहरुको उमेर तथा कानूनी अवस्था सुहाउँदो व्यबहार गरिनेछ ।

**धारा ११**

कुनै करारीय दायित्व पूरा गर्न नसकेको आधारमा मात्रै कसैलाई पनि थुनामा राखिने छैन ।

**धारा १२**

१. कुनै राष्ट्रको ईलाकाभित्र कानूनी रुपमा रहेको प्रत्येक व्यक्तिलाई सो ईलाकाभित्र आवतजावत गर्ने स्वतन्त्रता तथा आफ्नो आवास रोज्न पाउने स्वतन्त्रताको अधिकार हुनेछ ।

२. प्रत्येक व्यक्ति आफ्नो देश लगायत कुनै पनि देश छोड्न स्वतन्त्र हुनेछ ।

३. माथि उल्लिखित अधिकारहरुमा कानून बमोजिम लगाइएका, राष्ट्रिय सुरक्षा, सार्वजनिक व्यवस्था, सार्वजनिक स्वास्थ्य वा नैतिकता वा अरुको अधिकार तथा स्वतन्त्रताहरुको संरक्षण गर्न आवश्यक तथा प्रस्तुत प्रतिज्ञापत्रमा स्वीकार गरिएका अन्य अधिकारहरु अनुकुल हुने प्रतिवन्धहरु बाहेक कुनै पनि प्रतिवन्धहरु लगाईने छैन ।

४. कुनै पनि व्यक्तिलाई आफ्नो देशभित्र प्रवेश गर्न पाउने अधिकारबाट स्वेच्छाचारी रुपमा वञ्चित गरिने छैन ।

**धारा १३**

प्रस्तुत प्रतिज्ञापत्रको कुनै पक्ष राष्ट्रको ईलाकामा कानूनी रुपमा रहेको कुनै पनि विदेशीलाई कानून बमोजिम गरिएको निर्णय अनुरुप मात्रै त्यहाँबाट निष्काशन गर्न सकिनेछ र राष्ट्रिय सुरक्षाको वाध्यात्मक कारणबाट अन्यथा गर्नुपर्ने भएमा बाहेक निजले आफ्नो निष्काशन विरुद्ध कारणहरु पेश गर्न, आफ्नो मुद्दा सक्षम अधिकारीबाट वा सक्षम अधिकारीबाट विशेष रुपमा तोकिएको कुनै व्यक्ति वा व्यक्तिहरुबाट पुनरावलोकन गराउन तथा सो प्रयोजनको लागि त्यस्तो अधिकारी वा व्यक्ति वा व्यक्तिहरु समक्ष आफ्नो प्रतिनिधित्व गराउन पाउनेछ ।

**धारा १४**

१. सबै व्यक्तिहरु अदालत तथा न्यायाधिकरणको अगाडि समान हुनेछन् । कुनै व्यक्ति विरुद्धको कुनै फौजदारी अभियोग निर्धारण गर्दा वा कुनै मुद्दामा निजको अधिकार तथा कर्तव्यहरुको निर्धारण

गर्दा निजलाई कानूनद्वारा स्थापित सक्षम, स्वतन्त्र तथा निष्पक्ष न्यायाधिकरणबाट निष्पक्ष र सार्वजनिक सुनुवाई गराई पाउने अधिकार हुनेछ । प्रजातान्त्रिक समाजमा नैतिकता, सार्वजनिक व्यवस्था वा राष्ट्रिय सुरक्षाको कारणले वा पक्षहरुको व्यक्तिगत जीवनको हितमा त्यसो गर्नु पर्ने भएमा वा विशेष परिस्थितिमा सार्वजनिक गर्दा न्यायको हितमा प्रतिकूल प्रभाव पर्न सक्छ भन्ने कुरा अदालतलाई लागेमा अत्यावश्यक भएको हदसम्म सम्पूर्ण सुनुवाई वा त्यसको कुनै अंशमा पत्रकार प्रेस तथा जनताको प्रवेशमा रोक लगाउन सकिनेछ । तर किशोरहरुको हितको रक्षा गर्न अन्यथा गर्नुपर्ने भएको वा कारवाहीहरु वैवाहिक विवाद वा बालबालिकाको संरक्षकत्वसँग सम्बन्धित भएको अवस्थामा बाहेक कुनै पनि फौजदारी मुद्दामा वा कानूनी मुद्दामा गरिएका फैसलाहरु भने सार्वजनिक गरिनेछ ।

२. फौजदारी कसूरको आरोप लागेका प्रत्येक व्यक्तिलाई कानून बमोजिम दोषी प्रमाणित नभएसम्म निर्दोष भएको अनुमान गरि पाउने अधिकार हुनेछ ।

३. प्रत्येक व्यक्ति विरुद्धको कुनै पनि फौजदारी अभियोग निर्धारण गर्दा निजलाई पूर्ण समानताका आधारमा देहाय बमोजिमका न्यूनतम प्रत्याभूतिहरु पाउने अधिकार हुनेछ:

(क) आफू विरुद्धको अभियोगको प्रकृति तथा कारणको आफूले बुझ्ने भाषामा तुरुन्त र विस्तृत रुपमा जानकारी पाउने,

(ख) आफ्नो प्रतिरक्षा तयार गर्नका लागि पर्याप्त समय तथा सुविधा पाउने र आफूले रोजेको कानून व्यवसायीसँग कुराकानी गर्न पाउने,

(ग) अनुचित विलम्ब विना सुनुवाई गरी पाउने ।

(घ) आफ्नो उपस्थितिमा सुनुवाई हुने, तथा आफू स्वयंले वा आफूले रोजेको कानूनी सहायता मार्फत प्रतिरक्षा गर्ने, कानूनी सहायता नभएको अवस्थामा यस अधिकारको जानकारी पाउने, न्यायको हितमा निजलाई कानूनी सहायता आवश्यक भएको अवस्थामा र निजसँग सोको लागि भुक्तानी गर्न पर्याप्त साधन नभएको खण्डमा कुनै त्यस्तो मुद्दामा निजबाट कुनै भुक्तानी नहुँदा पनि कानूनी सहायता पाउने,

(ङ) आफू विरुद्धका साक्षीहरु परीक्षण गर्ने वा परीक्षण गरि पाउने, र आफू विरुद्धका साक्षीहरुकै जस्तो समान अवस्थाहरुमा आफ्नो तर्फका साक्षीहरुको उपीस्थति र परीक्षण प्राप्त गर्ने,

(च) आफूले अदालतमा प्रयोग गरिने भाषा बुझ्न वा बोल्न नसक्ने भएमा दोभाषेको निःशुल्क सेवा पाउने,

(छ) आफ्नो विरुद्ध प्रमाण दिन वा अपराध स्वीकार गर्न वाध्य गराउन नपाउने,

४. किशोर किशोरीहरुको हकमा निजहरुको उमेर तथा पुनर्स्थापना प्रवर्द्धन गर्ने वाञ्छनीयतालाई मध्यनजर राख्ने किसिमका कार्यविधिहरुको व्यवस्था हुनेछन्।

५. अपराधमा सजाय पाएका प्रत्येक व्यक्तिलाई कानून बमोजिम कुनै उच्च न्यायाधिकरणबाट आफ्नो सजाय तथा दण्ड पुनरावलोकन गराई पाउने अधिकार हुनेछ।

६. अन्तिम निर्णयबाट कुनै व्यक्तिले फौजदारी कसूरमा सजायँ पाएको र पछि गएर नयाँ वा हालै पत्ता लागेको तथ्यबाट वेइन्साफ भएको कुरा निर्विवाद रुपमा पुष्टि भएको भन्ने आधारमा निजको सजाय उल्टाईएको वा निजलाई माफी दिईएको अवस्थामा पूर्ण वा आंशिक रुपमा निजको कारणबाट अज्ञात तथ्यहरु समयमै पत्ता लाग्न नसकेको कुरा प्रमाणित भएकोमा बाहेक, त्यस्तो सजायको परिणाम स्वरुप दण्ड सजाय भोगेको त्यस्तो व्यक्तिलाई कानून बमोजिम क्षतिपूर्ति दिईनेछ।

७. कुनै पनि व्यक्तिलाई कुनै कसूरमा प्रत्येक देशको कानून र दण्ड कार्यविधि अनुसार अन्तिम सजाय दिई सकेपछि वा सोबाट निजले छुटकारा पाइसकेपछि सोही कसूरमा निज विरुद्ध पुनः मुद्दा चलाउन वा निजलाई दण्ड दिन पाईने छैन

**धारा १५**

१. कुनै कार्य वा त्रुटी गर्दाका बखत राष्ट्रिय वा अन्तर्राष्ट्रिय कानून अन्तर्गत त्यस्तो कार्य वा त्रुटी फौजदारी कसूर नहुने भएमा कुनै पनि व्यक्तिलाई त्यस्तो कार्य वा त्रुटीका लागि कुनै पनि फौजदारी कसूरको दोषी बनाइने छैन न त फौजदारी कसूर गर्दाका बखत प्रचलित सजाय भन्दा बढी सजाय नै गरिनेछ। कसूर गरेको समय पछि कानूनद्वारा कम सजायको व्यवस्था गरिएकोमा कसूरदारलाई सोको फाइदा प्राप्त हुनेछ।

२. राष्ट्रहरुको समुदायबाट स्वीकृत कानूनका सामान्य सिद्धान्त अनुसार कुनै कार्य वा त्रुटी गर्दाको समयमा अपराध मानिने त्रुटी वा कार्यका लागि कुनै व्यक्तिको सुनुवाई वा सजायलाई यस धारामा उल्लिखित कुनै पनि कुराले प्रतिकूल प्रभाव पार्ने छैन।

**धारा १६**

प्रत्येक व्यक्तिलाई सबै ठाउँमा कानूनको अगाडि व्यक्तिको रुपमा मान्यता पाउने अधिकार हुनेछ।

**धारा १७**

१. कुनै पनि व्यक्तिको गोपनियता, परिवार, घर वा लेखापढीमा स्वेच्छाचारी वा गैर कानूनी हस्तक्षेप गरिने छैन न त निजको प्रतिष्ठा तथा ख्यातीमा गैर कानूनी आक्रमण नै गरिने छ।

२. प्रत्येक व्यक्तिलाई त्यस्तो हस्तक्षेप वा आक्रमण विरुद्ध कानूनको संरक्षण पाउने अधिकार हुनेछ।

**धारा १८**

१. प्रत्येक व्यक्तिलाई विचार, विवेक तथा धर्मको स्वतन्त्रताको अधिकार हुनेछ। यस अधिकारमा आफूले रोजेको धर्म वा आस्था अवलम्वन गर्ने स्वतन्त्रता र व्यक्तिगत रुपमा वा अरुसँग मिलेर तथा सार्वजनिक वा निजी रुपमा पूजाआजा, नियम, अभ्यास तथा शिक्षणमा आफ्नो धर्म वा आस्था प्रकट गर्न पाउने स्वतन्त्रता समेत समावेश हुनेछ।

२. कुनै पनि व्यक्तिलाई आफूले रोजेको धर्म वा आस्था अवलम्वन वा ग्रहण गर्ने निजको स्वतन्त्रतामा आघात पुऱ्याउन सक्ने कुनै पनि करकापमा पारिने छैन।

३. आफ्नो धर्म वा आस्था प्रकट गर्न पाउने स्वतन्त्रतामा कानूनद्वारा तोकिएका र सार्वजनिक सुरक्षा, व्यवस्था, स्वास्थ्य वा नैतिकता वा अरुको मौलिक अधिकार र स्वतन्त्रताहरुको संरक्षण गर्न आवश्यक प्रतिवन्धहरु मात्र लगाउन सकिनेछ।

४. प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले आफ्नो आस्था अनुकूल हुने गरी आफ्ना बालबालिकाको धार्मिक तथा नैतिक शिक्षा सुनिश्चित गर्ने मातापिताको तथा लागू हुने अवस्थामा कानूनी संरक्षकहरुको स्वतन्त्रतालाई सम्मान गर्ने प्रतिज्ञा गर्दछन्।

**धारा १९**

१. प्रत्येक व्यक्तिलाई विना हस्तक्षेप आफ्ना विचारहरु राख्न पाउने अधिकार हुनेछ।

२. प्रत्येक व्यक्तिलाई अभिव्यक्ति स्वतन्त्रताको अधिकार हुनेछ। सीमाको बन्देज विना, मौखिक, लिखित वा मुद्रित रुपमा वा कलात्मक रुपमा वा निजको आफ्नो छनौटको अन्य कुनै माध्यम मार्फत सबै किसिमका सूचना र विचारहरु प्राप्त गर्ने तथा दिने स्वतन्त्रता समेत यस अधिकारमा समावेश हुनेछन्।

३. यस धाराको प्रकरण २ मा व्यवस्था गरिएका अधिकारहरुको प्रयोगमा विशेष कर्तव्य तथा उत्तरदायित्वहरु समेत निहित हुन्छन् । तसर्थ यो अधिकार केही निश्चित प्रतिवन्धहरुको अधिनमा हुन सक्नेछ । तर यस्ता प्रतिवन्धहरु कानूनद्वारा व्यवस्था गरिएको र देहायका कुराको लागि आवश्यक भएको हुनुपर्छः

(क) अरुको अधिकार वा प्रतिष्ठाको सम्मान,

(ख) राष्ट्रिय सुरक्षा वा सार्वजनिक व्यवस्था वा सार्वजनिक स्वास्थ्य वा नैतिकताको संरक्षण ।

**धारा २०**

१. युद्धको लागि कुनै पनि प्रचार कानूनबाट निषेधित गरिनेछ ।

२. भेदभाव, शत्रुता वा हिंसालाई उत्तेजित पार्ने राष्ट्रिय, जातीय वा धार्मिक घृणाको कुनै पनि वकालतलाई कानूनबाट निषेधित गरिनेछ ।

**धारा २१**

शान्तिपूर्वक भेला हुने अधिकारलाई स्वीकार गरिनेछ । यस अधिकारको प्रयोगमा कानून बमोजिम लगाइएका र प्रजातान्त्रिक समाजमा राष्ट्रिय सुरक्षा वा सार्वजनिक सुरक्षा, सार्वजनिक व्यवस्था, सार्वजनिक स्वास्थ्य वा नैतिकताको संरक्षण वा अरुको अधिकार तथा स्वतन्त्रताहरुको संरक्षणको हितमा आवश्यक प्रतिवन्धहरु बाहेक अन्य कुनै पनि प्रतिवन्धहरु लगाउन पाइने छैन ।

**धारा २२**

१. प्रत्येक व्यक्तिलाई आफ्नो हितको संरक्षणको लागि ट्रेड युनियनहरु खोल्ने र त्यसमा सम्मिलित हुने अधिकार लगायत अरु व्यक्तिहरुसँग संगठनको स्वतन्त्रताको अधिकार हुनेछ ।

२. यस अधिकारको प्रयोगमा कानून बमोजिम लगाइएका र प्रजातान्त्रिक समाजमा राष्ट्रिय सुरक्षा वा सार्वजनिक सुरक्षा, सार्वजनिक व्यवस्था, सार्वजनिक स्वास्थ्य वा नैतिकताको संरक्षण वा अरुको अधिकार तथा स्वतन्त्रताहरुको संरक्षणको हितमा आवश्यक प्रतिवन्धहरु बाहेक अन्य कुनै पनि प्रतिवन्धहरु लगाउन पाईने छैन । सैनिक बलका सदस्यहरु तथा प्रहरीका सदस्यहरुबाट यस अधिकारको प्रयोग गर्दा निजहरु उपर कानूनी प्रतिवन्धहरु लगाउन यस धाराले रोक लगाउने छैन ।

३. यस धाराको कुनै पनि कुराले संघको स्वतन्त्रता तथा संगठन गर्ने अधिकारको संरक्षण सम्बन्धी अन्तर्राष्ट्रिय श्रम संगठनको सन् १९४८ को महासन्धिका पक्ष राष्ट्रहरुलाई सो महासन्धिमा व्यवस्था गरिएका प्रत्याभूतिहरुलाई प्रतिकूल प्रभाव पार्ने कानूनी उपायहरु अपनाउन वा त्यस्तो प्रभाव पार्ने गरी कानून लागू गर्न अख्तियारी दिने छैन ।

**धारा २३**

१. परिवार समाजको प्राकृतिक तथा मौलिक समूह इकाई हो र परिवारले समाज तथा राष्ट्रबाट संरक्षण पाउनेछ ।

२. विवाहयोग्य उमेरका पुरुष तथा महिलाको विवाह गर्ने र परिवार आरम्भ गर्ने अधिकारलाई स्वीकार गरिनेछ ।

३. इच्छुक वरवधुको स्वतन्त्र तथा पूर्ण मन्जुरी विना विवाह सम्पन्न गरिने छैन ।

४. प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले विवाह सम्बन्धमा, विवाह अवधिभर वा विवाहको विच्छेदका समयमा वर वधुहरुको अधिकार र उत्तरदायित्वहरुको समानता सुनिश्चित गर्न समुचित कदमहरु चाल्ने छन् । सम्वन्ध विच्छेद भएको खण्डमा बालबालिकाको आवश्यक संरक्षणको लागि व्यवस्था गरिनेछ ।

**धारा २४**

१. जाति, वर्ण, लिंग, भाषा, धर्म, राष्ट्रिय वा सामाजिक उत्पत्ति, सम्पत्ति वा जन्मको आधारमा गरिने कुनै पनि भेदभाव विना निज नाबालक भएको हैसियतबाट आवश्यक संरक्षणका उपायहरुको अधिकार प्रत्येक बालकलाई परिवार, समाज तथा राष्ट्रबाट प्राप्त हुनेछ ।

२. प्रत्येक बालकलाई जन्मेपछि तत्कालै दर्ता गरिने र निजको नाम राखिनेछ ।

३. प्रत्येक बालकलाई राष्ट्रियता प्राप्त गर्ने अधिकार छ ।

**धारा २५**

प्रत्येक नागरिकलाई धारा २ मा उल्लेख गरिएका कुनै पनि भेदभाव विना तथा अनुचित प्रतिवन्धहरु विना देहायको कुराको अधिकार तथा अवसर प्राप्त हुनेछः

(क) प्रत्यक्ष रुपमा वा स्वतन्त्र रुपमा छानिएका प्रतिनिधिहरु मार्फत सार्वजनिक जीवन संचालनमा भाग लिने,

(ख) सर्वव्यापी तथा समान मताधिकारबाट र गोप्य मतदानबाट मतदाताहरुको इच्छाको स्वतन्त्र अभिव्यक्तिको प्रत्याभूति गर्ने स्वच्छ आवधिक निर्वाचनहरुमा मतदान गर्ने र निर्वाचित हुने,

(ग) आफ्नो देशमा समानताका सामान्य शर्तहरुमा सार्वजनिक सेवामा पहुंच प्राप्त गर्ने ।

**धारा २६**

सबै व्यक्तिहरु कानूनको दृष्टिमा समान छन् र कुनै पनि भेदभाव विना कानूनको समान संरक्षणका हकदार छन् । यस सम्वन्धमा कानूनले कुनै पनि भेदभावलाई निषेध गर्ने र सबै व्यक्तिहरुलाई जाति, वर्ण, लिंग, भाषा, धर्म, राजनीतिक वा अन्य विचार, राष्ट्रिय वा सामाजिक उत्पत्ति, सम्पत्ति, जन्म वा अन्य हैसियतका आधारमा हुने कुनै पनि भेदभाव विरुद्ध समान तथा प्रभावकारी संरक्षणको प्रत्याभूति दिइनेछ ।

**धारा २७**

सामाजिक, धार्मिक वा भाषिक अल्पसंख्यकहरु विद्यमान रहेका राष्ट्रहरुमा त्यस्ता अल्पसंख्यकका व्यक्तिहरुलाई आफ्ना समूहका अन्य सदस्यहरुसँग मिली आफ्नो संस्कृतिको उपभोग गर्ने, आफ्नो धर्मको प्रचार तथा अभ्यास गर्ने वा आफ्नो भाषा प्रयोग गर्ने अधिकारबाट वञ्चित गरिने छैन ।

**भाग ४**

**धारा २८**

१. मानव अधिकार समिति (प्रस्तुत प्रतिज्ञापत्रमा यसपछि "समिति" भनिएको) को स्थापना गरिनेछ । यस समितिमा अठार सदस्यहरु रहने र यसले यसपछि व्यवस्था गरिएका कामहरु गर्नेछ ।

२. प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुका उच्च नैतिक चरित्र भएका र मानव अधिकारको क्षेत्रमा सक्षमता स्वीकार गरिएका नागरिकहरुबाट समिति गठन हुनेछ । यसरी गठन गर्दा कानूनी अनुभव भएका केही व्यक्तिहरुको सहभागिताको उपयोगितालाई समेत ध्यान दिईने छ ।

३. समितिका सदस्यहरु निर्वाचित हुने र निजहरुले आफ्नो व्यक्तिगत क्षमतामा सेवा गर्नेछन् ।

**धारा २९**

१. धारा २८ मा तोकिएको योग्यता भएका र सो प्रयोजनको लागि प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले मनोनित गरेका व्यक्तिहरुको सूचिबाट गोप्य मतदानद्वारा समितिका सदस्यहरु निर्वाचित हुनेछन् ।

२. प्रस्तुत प्रतिज्ञापत्रको प्रत्येक पक्ष राष्ट्रले वढीमा दुई जना व्यक्तिहरु मनोनयन गर्न सक्नेछ । यी व्यक्तिहरु मनोनयन गर्ने राष्ट्रका नागरिकहरु हुनेछन् ।

३. कुनै पनि व्यक्ति पुनः मनोनित हुन योग्य हुनेछ ।

**धारा ३०**

१. प्रस्तुत प्रतिज्ञापत्र लागू भएको मितिले ६ महिना भित्रै प्रारम्भिक निर्वाचन गरिनेछ ।

२. धारा ३४ अनुसार घोषित रिक्त पद पूर्ति गर्ने निर्वाचन बाहेक समितिको प्रत्येक निर्वाचनको मिति भन्दा कम्तिमा चार महिना अगावै संयुक्त राष्ट्र संघका महासचिवले प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुलाई तीन महिनाभित्र समितिको सदस्यताको लागि आ-आफ्ना मनोनयनहरु पेश गर्न आमन्त्रण गर्दै पत्र पठाउने छन् ।

३. संयुक्त राष्ट्र संघका महासचिवले यसरी मनोनित सबै व्यक्तिहरुको वर्णानुक्रम अनुसारको र निजहरुलाई मनोनयन गर्ने पक्ष राष्ट्रहरुको नाम समेत जनिएको सूची तयार पारी सो सूची प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुलाई प्रत्येक निर्वाचनको मिति भन्दा एक महिना अगाडि पठाउने छन् ।

४. संयुक्त राष्ट्र संघको प्रधान कार्यालयमा संयुक्त राष्ट्र संघका महासचिवले आयोजना गरेको प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुको बैठकमा समितिका सदस्यहरुको निर्वाचन हुनेछ । यस वैठकमा प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुमध्ये दुई तिहाईको उपस्थितिलाई गणपूरक संख्या मानिनेछ । वैठकमा उपस्थित भई मतदान गर्ने पक्ष राष्ट्रहरुका प्रतिनिधिहरुको स्पष्ट बहुमत प्राप्त गरी सबैभन्दा बढी मत प्राप्त गर्ने मनोनित व्यक्तिहरु समितिको सदस्यमा निर्वाचित भएको मानिने छ ।

**धारा ३१**

१. समितिमा एउटै राष्ट्रको एकजना भन्दा वढी नागरिक समावेश हुनसक्ने छैन ।

२. समितिको निर्वाचनमा सदस्यताको समन्यायिक भौगोलिक वितरण तथा सभ्यताका विभिन्न रुपहरुको र प्रमुख कानूनी प्रणालीहरुको प्रतिनिधित्वलाई ध्यान दिईनेछ ।

**धारा ३२**

१. समितिका सदस्यहरु चार बर्षको अवधिका लागि निर्वाचित हुनेछन् । पुनः मनोनयन भएमा उनीहरु पुनः निर्वाचनको लागि योग्य हुनेछन् । तर पहिलो निर्वाचनमा निर्वाचित सदस्यहरुमध्ये नौं जना सदस्यहरुको पदावधि दुई वर्षमा समाप्त हुनेछ । पहिलो निर्वाचन भएको लगत्तै पछि धारा ३० को प्रकरण ४ बमोजिमको वैठकको अध्यक्षले यी नौ जना सदस्यहरुको नाम गोला प्रथाद्वारा छनौट गर्नेछन् ।

२. पदावधि समाप्त भएपछि प्रस्तुत प्रतिज्ञापत्रको यस भागका अघिल्ला धाराहरु अनुसार निर्वाचन गरिनेछ ।

**धारा ३३**

१. अस्थायी प्रकृतिको अनुपस्थिति बाहेक अन्य कुनै पनि कारणबाट समितिको कुनै सदस्यले कार्य गर्न छोडेको कुरामा अन्य सदस्यहरुको सर्वसम्मति भएमा समितिका अध्यक्षले संयुक्त राष्ट्र संघका महासचिवलाई सोको सूचना दिनेछन् र महासचिवले त्यसपछि सो सदस्यको स्थान रिक्त भएको घोषणा गर्नेछन् ।

२. समितिको कुनै सदस्यको मृत्यु भएमा वा सदस्यले राजीनामा दिएमा अध्यक्षले तुरुन्तै संयुक्त राष्ट्र संघका महासचिवलाई सो कुराको सुचना दिनेछन् र महासचिवले मृत्यु भएको मिति वा राजिनामा लागू भएको मितिदेखि सो स्थान रिक्त भएको घोषणा गर्नेछन् ।

**धारा ३४**

१. धारा ३३ अनुसार रिक्त स्थान घोषणा भएमा र रिक्त स्थानको घोषणा भएको छ महिनाभित्र विस्थापित गरिने सदस्यको पदावधि समाप्त हुँदैन भने संयुक्त राष्ट्र संघका महासचिवले प्रस्तुत प्रतिज्ञापत्रका प्रत्येक पक्ष राष्ट्रलाई सोको सूचना दिनेछन् । रिक्त स्थान पूर्ति गर्ने प्रयोजनकालागि धारा २९ बमोजिम पक्ष राष्ट्रहरुले दुई महिनाभित्र मनोनयनहरु पेश गर्न सक्नेछन् ।

२. संयुक्त राष्ट्र संघका महासचिवले यसरी मनोनित व्यक्तिहरुको वर्णानुक्रम अनुसारको सूची तयार पारी प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुलाई पठाउने छन् । त्यसपछि प्रस्तुत प्रतिज्ञापत्रको यस भागका सम्वद्ध व्यवस्थाहरु अनुसार रिक्त स्थान पूर्ति गर्न निर्वाचन गरिनेछ ।

३. धारा ३२ अनुसार घोषणा गरिएको रिक्त स्थान पूर्ति गर्न निर्वाचित भएको समितिको सदस्यले सो धाराको व्यवस्था अन्तर्गत समितिको स्थान रिक्त गराउने सदस्यको बाँकी पदावधिको लागि पदभार ग्रहण गर्नेछ ।

**धारा ३५**

संयुक्त राष्ट्र संघको महासभाको स्वीकृतिले समितिका सदस्यहरुले समितिको उत्तरदायित्वको महत्व विचार गरी महासभाले निर्धारण गरेको शर्त तथा अवस्थाहरुमा संयुक्त राष्ट्र संघको स्रोतबाट पारिश्रमिक पाउने छन् ।

**धारा ३६**

संयुक्त राष्ट्र संघका महासचिवले प्रस्तुत प्रतिज्ञापत्र अन्तर्गत समितिले गर्नुपर्ने काम प्रभावकारी रुपले सम्पादन गर्नको लागि आवश्यक कर्मचारी र सुविधाहरु उपलब्ध गराउने छन् ।

**धारा ३७**

१. संयुक्त राष्ट्र संघका महासचिवले समितिको प्रारम्भिक बैठक संयुक्त राष्ट्र संघको प्रधान कार्यालयमा आयोजना गर्नेछन् ।

२. प्रारम्भिक बैठक पछि समितिको कार्यविधिको नियममा व्यवस्था गरे बमोजिमको समयमा समितिको बैठक बस्नेछ ।

३. सामान्यतया समितिको बैठक संयुक्त राष्ट्र संघको प्रधान कार्यालय वा जेनेभास्थित संयुक्त राष्ट्र संघको कार्यालयमा बस्नेछ ।

**धारा ३८**

समितिको प्रत्येक सदस्यले आफ्नो पदभार ग्रहण गर्नु पूर्व आफ्नो कार्य निष्पक्ष रुपमा र विवेकपूर्वक सम्पादन गर्नेछु भनी खुला समितिमा पवित्र घोषणा गर्नेछन् ।

**धारा ३९**

१. समितिले दुई वर्षको पदावधिकोलागि आफ्ना पदाधिकारीहरु निर्वाचित गर्नेछ । उनीहरु पुनः निर्वाचित हुन सक्नेछन् ।

२. समितिले आफ्नो कार्यविधि सम्बन्धी नियमहरु आफै निर्धारण गर्नेछ । तर यी नियमहरुले अन्य कुराका अतिरिक्त देहायका कुराहरुको व्यवस्था गर्नेछन्:

(क) बाह्र जना सदस्यहरुले गणपूरक संख्या पुग्ने,

(ख) समितिका निर्णयहरु उपस्थित सदस्यहरुको बहुमतबाट गरिने ।

**धारा ४०**

१. प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले यस प्रतिज्ञापत्रमा स्वीकृत अधिकारहरुलाई प्रभावकारी बनाउन आफूले ग्रहण गरेका उपायहरु तथा ती अधिकारहरुको उपभोगमा गरिएका प्रगति सम्बन्धी प्रतिवेदन पेश गर्ने प्रतिज्ञा गर्दछन्:-

(क) सम्बन्धित पक्ष राष्ट्रहरुको हकमा प्रस्तुत प्रतिज्ञापत्र लागू भएको एक वर्षभित्र,

(ख) त्यसपछि, समितिले सोको लागि अनुरोध गरेको बखत ।

२. सवै प्रतिवेदनहरु संयुक्त राष्ट्र संघका महासचिव समक्ष पेश गरिने र निजले त्यस्ता प्रतिवेदनहरु विचारका लागि समितिमा पठाउनेछन् । प्रस्तुत प्रतिज्ञापत्रको कार्यान्वयनमा असर पार्ने कुनै तत्व वा कठिनाइहरु भए सो समेत प्रतिवेदनहरुमा उल्लेख गरिनेछ ।

३. समितिसँग परामर्श गरी संयुक्त राष्ट्र संघका महासचिवले विशिष्टिकृत निकायहरुका कार्यक्षेत्रभित्र पर्ने प्रतिवेदनका अंशहरुका सम्बन्धित प्रतिहरु सम्बन्धित विशिष्टिकृत निकायहरुलाई पठाउन सक्नेछन् ।

४. समितिले प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुबाट पेश गरिएका प्रतिवेदनहरुको अध्ययन गर्नेछ । यसले आफ्ना प्रतिवेदनहरु तथा आफूले उचित ठानेका सामान्य टिप्पणीहरु पक्ष राष्ट्रहरुलाई पठाउनेछ । समितिले प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुबाट प्राप्त गरेको प्रतिवेदनका प्रतिहरु संगै यी टिप्पणीहरु आर्थिक तथा सामाजिक परिषद्लाई पनि पठाउन सक्नेछ ।

५. प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुले यो धाराको प्रकरण ४ बमोजिम गर्न सकिने कुनै पनि टिप्पणी उपर आफ्नो धारणा समिति समक्ष पेश गर्न सक्नेछन् ।

**धारा ४१**

१. प्रस्तुत प्रतिज्ञापत्रको कुनै पक्ष राष्ट्रले अर्को पक्ष राष्ट्रले प्रस्तुत प्रतिज्ञापत्र अन्तर्गतको आफ्नो दायित्व पूरा गरिरहेको छैन भनी दावी गरेको सूचना प्राप्त गरी सो उपर विचार गर्नसक्ने समितिको सक्षमता स्वीकार गरेको कुराको घोषणा यस धारा अन्तर्गत कुनै पनि समयमा गर्न सक्नेछ । समितिको सक्षमता स्वीकार गरी घोषणा गरेको पक्ष राष्ट्रबाट पेश गरिएका सूचना मात्र

यस धारामा उल्लिखित कार्यविधि अनुरुप ग्रहण गरी सो उपर विचार गर्न सकिनेछ । यस्तो घोषणा नगरेको पक्ष राष्ट्रसँग सम्बन्धित कुनै पनि सूचना उपर समितिले कारवाही गर्नेछैन । यस धारा अन्तर्गत प्राप्त गरिएका सूचनाहरुको सम्बन्धमा देहायको कार्यविधि अवलम्वन गरिनेछः

(क) प्रस्तुत प्रतिज्ञापत्रको कुनै पक्ष राष्ट्रलाई प्रस्तुत प्रतिज्ञापत्रका व्यवस्थाहरुलाई अर्को पक्ष राष्ट्रले कार्यान्वयन गरिरहेको छैन भन्ने लागेमा सो पक्ष राष्ट्रले लिखित सूचना दिई सो कुरा त्यस्तो अर्को पक्ष राष्ट्रको ध्यानमा ल्याउन सक्नेछ । सूचना प्राप्त गरेको तीन महिनाभित्र सूचना प्राप्त गर्ने राष्ट्रले सूचना पठाउने राष्ट्रलाई विषयवस्तु स्पष्ट गर्ने व्याख्या वा अन्य कुनै कथन लिखित रुपमा उपलब्ध गराउनेछ र त्यस्तो व्याख्या वा कथनमा संभव र सान्दर्भिक भएसम्म, सो विषयमा लिईएका, विचाराधिन रहेका वा उपलब्ध घरेलु कार्यविधि तथा उपचारहरुको सन्दर्भ समेत समावेश गर्नुपर्नेछ,

(ख) सूचना प्राप्त गर्ने राष्ट्रले प्रारम्भिक सूचना प्राप्त गरेको छ महिनाभित्र सम्बन्धित दूबै पक्ष राष्ट्रहरुको चित्त बुझ्ने गरी सो कुराको समाधान हुन नसकेमा, समितिलाई तथा अर्को राष्ट्रलाई सूचना दिएर सो कुरा समिति समक्ष पेश गर्ने अधिकार दूबै राष्ट्रहरुलाई हुनेछ,

(ग) सो विषयमा अन्तर्राष्ट्रिय कानूनका मान्य सिद्धान्तहरु अनुरुप उपलब्ध सबै घरेलु उपचारहरुको माग गरी त्यस्ता उपचारहरु समाप्त भईसकेको कुरा समितिले एकिन गरिसकेपछि मात्र समितिले आफू समक्ष पेश गरिएको कुनै पनि विषय उपर यस धारा अन्तरगत कारवाही गर्नेछ । उपचारहरु लागू गर्न अनुचित रुपमा ढिलाई हुने अवस्थामा यो व्यवस्था लागू हुने छैन,

(घ) यस धारा अन्तर्गत सूचना परीक्षण गर्दा समितिले गोप्य बैठकहरु गर्नेछ,

(ङ) उप-प्रकरण (ग) का व्यवस्थाहरुको अधिनमा रही, प्रस्तुत प्रतिज्ञापत्रमा व्यवस्था गरिएका मानव अधिकार तथा मौलिक स्वतन्त्रताहरुको सम्मानका आधारमा सो विषयको मैत्रिपूर्ण समाधान गराउने उद्देश्यले सम्बन्धित पक्ष राष्ट्रहरुलाई समितिले आफ्नो सद्भावपूर्ण सेवा ( गुड अफिसेस) उपलब्ध गराउनेछ,

(च) आफू समक्ष पेश गरिएको कुनै पनि विषयमा समितिले उप-प्रकरण (ख) बमोजिमका सम्बन्धित पक्ष राष्ट्रहरुलाई सम्बन्धित जानकारी उपलब्ध गराउन अनुरोध गर्न सक्नेछ,

(छ) उप-प्रकरण (ख) मा उल्लिखित सम्बन्धित पक्ष राष्ट्रहरुलाई सो विषय उपर समितिमा विचार भईरहेको बेलामा आफ्नो प्रतिनिधित्व गर्न पाउने तथा मौखिक वा लिखित रुपमा जिकीर पेश गर्ने अधिकार हुनेछ,

(ज) उप-प्रकरण (ख) अन्तर्गत सूचना प्राप्त गरेको मितिले बाह्र महिनाभित्र समितिले प्रतिवेदन पेश गर्नेछः

(१) उप-प्रकरण (ङ) का अवस्थाभित्र समाधान हासिल भएको अवस्थामा, समितिले आफ्नो प्रतिवेदनलाई तथ्यहरुको तथा त्यस्तो समाधानको संक्षिप्त व्यहोरामा सीमित गर्नेछ,

(२) उप-प्रकरण (ङ) का अवस्थाभित्र समाधान हासिल नभएको अवस्थामा, समितिले आफ्नो प्रतिवेदनलाई तथ्यहरुको संक्षिप्त व्यहोरामा सीमित गर्नेछ र सम्बन्धित पक्ष राष्ट्रहरुबाट पेश गरिएका लिखित जिकीरहरु तथा मौखिक जिकीरहरुको अभिलेखलाई प्रतिवेदन साथ संलग्न गरिनेछ । प्रत्येक विषयका हकमा, सो प्रतिवेदन सम्वन्धित पक्ष राष्ट्रहरुलाई पठाईनेछ ।

२. प्रस्तुत प्रतिज्ञापत्रका दशवटा पक्ष राष्ट्रहरुले यस धाराको प्रकरण १ अन्तर्गत घोषणाहरु गरिसकेपछि यस धाराका व्यवस्थाहरु लागू हुनेछन् । पक्ष राष्ट्रहरुले त्यस्ता घोषणा संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला गर्नेछन् । महासचिवले सोका प्रतिहरु अन्य पक्ष राष्ट्रहरुलाई पठाउने छन् । महासचिवलाई सूचना दिएर कुनै पनि समयमा घोषणा फिर्ता लिन सकिनेछ । यस धारा अन्तर्गत पठाईसकिएको सूचनाको विषय भएको कुनै पनि कुरा उपर विचार गर्ने कार्यमा त्यस्तो फिर्ताले प्रतिकूल प्रभाव पार्ने छैन । सम्बन्धित पक्ष राष्ट्रले नयाँ घोषणा नगरेसम्म महासचिवले धोषणा फिर्ताको सूचना प्राप्त गरेपछि त्यस्तो पक्ष राष्ट्रबाट यस धारा अन्तर्गत कुनै पनि अग्रीम सूचना प्राप्त गरिने छैन ।

## धारा ४२

१. (क) धारा ४१ अनुसार समिति समक्ष पेश गरिएको कुनै कुरा सम्बन्धित पक्ष राष्ट्रहरुको चित्त बुझ्ने गरी समाधान नभएमा समितिले सम्बन्धित पक्ष राष्ट्रहरुको पूर्व स्वीकृति लिई एउटा अस्थायी मेलमिलाप आयोग (यसपछि “आयोग” भनिएको) गठन गर्न सक्नेछ । प्रस्तुत प्रतिज्ञापत्रको सम्मानको आधारमा सो कुराको शान्तिपूर्ण समाधान गर्ने उद्देश्यले सम्बन्धित पक्ष राष्ट्रहरुलाई आयोगको सद्भावपूर्ण सेवा (गुड अफिसेस) उपलब्ध गराईनेछ ।

(ख) आयोगमा सम्बन्धित पक्ष राष्ट्रहरुलाई स्वीकार्य हुने पाँच जना व्यक्तिहरु रहने छन् । तीन महिनाभित्र सम्बन्धित पक्ष राष्ट्रहरु पूर्ण वा आंशिक रुपमा आयोगको गठनको सम्बन्धमा सहमत हुन नसकेको अवस्थामा, सहमति हुन नसकेका आयोगका सदस्यहरु समितिका सदस्यहरु मध्येबाट समितिको दुई तिहाई बहुमतबाट गोप्य मतदानद्वारा निर्वाचित हुनेछन् ।

२. आयोगका सदस्यहरुले आफ्नो व्यक्तिगत क्षमतामा सेवा गर्नेछन् । सम्बन्धित पक्ष राष्ट्रहरुका वा प्रस्तुत प्रतिज्ञापत्रको पक्ष नभएको कुनै पनि राष्ट्रका वा धारा ४२ अन्तर्गत घोषणा नगरेको पक्ष राष्ट्रका नागरिकहरु आयोगका सदस्य हुने छैनन् ।

३. आयोगले आफ्नो अध्यक्ष आफै निर्वाचित गर्ने र आफ्नो कार्यविधिका नियमहरु आफै निर्धारण गर्नेछ ।

४. आयोगका बैठक सामान्यतया संयुक्त राष्ट्र संघको प्रधान कार्यालयमा वा जेनेभास्थित संयुक्त राष्ट्र संघको कार्यालयमा गरिनेछ । तथापि संयुक्त राष्ट्र संघका महासचिव तथा सम्बन्धित पक्ष राष्ट्रहरुसँग परामर्श गरी आयोगले निर्धारण गरेको अन्य कुनै सुविधायुक्त स्थानमा पनि आयोगको बैठक गर्न सकिनेछ ।

५. धारा ३६ अनुसार उपलब्ध गराइएको सचिवालयले यस धारा अन्तर्गत तोकिएका आयोगहरुलाई समेत सेवा पुऱ्याउनेछ ।

६. समितिले प्राप्त गरी सुक्ष्म परीक्षण गरेका जानकारी आयोगलाई उपलब्ध गराइने, र आयोगले सम्बन्धित पक्ष राष्ट्रहरुलाई अन्य कुनै सम्बन्धित जानकारी उपलब्ध गराउन अनुरोध गर्न सक्नेछ ।

७. आयोगले पूर्ण रुपमा विषयवस्तु उपर विचार गरिसके पछि, तर कुनै पनि अवस्थामा विषयवस्तु लिएको १२ महिनाभित्रै, आयोगले सम्बन्धित पक्ष राष्ट्रहरुलाई संप्रेषण गर्नका लागि अध्यक्ष समक्ष प्रतिवेदन पेश गर्नेछः

(क) आयोगले १२ महिनाभित्र विषयवस्तु उपर आफ्नो विचार टुंग्याउन नसकेमा, आयोगले आफ्नो प्रतिवेदन विषयवस्तु उपरको विचार कुन स्थितिमा छ सोको संक्षिप्त विवरणमा सीमित गर्नेछ,

(ख) यस प्रतिज्ञापत्रमा स्वीकार गरिएका मानव अधिकारहरुको सम्मानका आधारमा विषयको शान्तिपूर्ण समाधान हासिल भएमा, आयोगले आफ्नो प्रतिवेदन तथ्यहरुको र हासिल भएको समाधानको संक्षिप्त व्यहोरामा सीमित गर्नेछ,

(ग) उपप्रकरण (ख) का अवस्थाभित्र समाधान हासिल नभएमा, आयोगको प्रतिवेदनमा सम्बन्धित पक्ष राष्ट्रहरु बीचको विवादसँग सम्बन्धित सबै तथ्यगत प्रश्नहरुमा यसको ठहर र विषयवस्तुको शान्तिपूर्ण समाधानका संभावनाहरु सम्बन्धी यसका विचारहरु समेत समावेश हुनेछन् । प्रतिवेदनमा सम्वन्धित पक्ष राष्ट्रहरुबाट पेश गरिएका लिखित जिकिरहरु तथा मौखिक जिकिरहरुको अभिलेख समेत उल्लेख गरिनेछ,

(घ) उपप्रकरण (ग) अन्तरगत आयोगले प्रतिवेदन पेश गरेमा, सम्वन्धित पक्ष राष्ट्रहरुले प्रतिवेदन प्राप्त गरेको मितिले तीन महिनाभित्र समितिको अध्यक्षलाई आफूले आयोगको प्रतिवेदनको व्यहोरा स्वीकार गर्ने वा नगर्ने कुराको सूचना दिनु पर्नेछ ।

८. यस धाराका प्रावधानहरुले धारा ४१ अन्तर्गत समितिको उत्तरदायित्वलाई प्रतिकूल प्रभाव पार्दैनन् ।

९. सम्बन्धित पक्ष राष्ट्रहरुले संयुक्त राष्ट्र संघका महासचिवबाट उपलब्ध गराईएको अनुमान अनुसार आयोगका सदस्यहरुको सम्पूर्ण खर्च समान रुपमा व्यहोर्नेछन् ।

१०. आयोगका सदस्यहरुको खर्च यस धाराको प्रकरण ९ अनुसार सम्बन्धित पक्ष राष्ट्रहरुबाट सोधभर्ना हुनु अघि आवश्यक भएमा भुक्तानी गरिदिने अधिकार संयुक्त राष्ट्र संघका महासचिवलाई दिईनेछ ।

**धारा ४३**

समितिका सदस्यहरु र धारा ४२ बमोजिम गठन हुनसक्ने अस्थायी मेलमिलाप आयोगका सदस्यहरुले संयुक्त राष्ट्र संघको विशेषाधिकार तथा उन्मुक्तीहरु सम्बन्धी महासन्धिका सम्बन्धित प्रकरणहरुमा व्यवस्था भए बमोजिमका संयुक्त राष्ट्र संघकालागि कार्यरत विशेषज्ञहरुले पाउने सुविधा, विशेषाधिकार तथा उन्मुक्तिहरु पाउनेछन् ।

**धारा ४४**

प्रस्तुत प्रतिज्ञापत्रको कार्यान्वयनका लागि गरिने व्यवस्थाहरु संयुक्त राष्ट्र संघ र त्यसका विशिष्टिकृत निकायका विधानहरु तथा महासन्धिहरुद्वारा वा सो अन्तर्गत मानव अधिकारको क्षेत्रमा तोकिएका कार्यविधिहरुमा प्रतिकूल प्रभाव नपर्ने गरी लागू गरिने छन् । यी व्यवस्थाहरुले प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरु बीच लागू रहेका सामान्य वा विशेष अन्तर्राष्ट्रिय सम्झौताहरु अनुसार विवादको समाधान गर्न अन्य कार्यविधिहरु अवलम्वन गर्न पक्ष राष्ट्रहरुलाई रोक लगाउने छैन ।

**धारा ४५**

समितिले आफ्नो काम कारवाही सम्बन्धी वार्षिक प्रतिवेदन आर्थिक तथा सामाजिक परिषद् मार्फत संयुक्त राष्ट्र संघको महासभामा पेश गर्नेछ ।

**भाग ५**

**धारा ४६**

संयुक्त राष्ट्र संघको बडापत्रका व्यवस्थाहरु तथा प्रस्तुत प्रतिज्ञापत्रमा उल्लिखित कुराहरुका सम्बन्धमा संयुक्त राष्ट्र संघका विभिन्न अंगहरु र विशिष्टिकृत निकायहरुका आ-आफ्ना उत्तरदायित्वहरु परिभाषित गर्ने विशिष्टिकृत निकायका विधानका व्यवस्थाहरुलाई कमजोर पार्ने गरी प्रस्तुत प्रतिज्ञापत्रको कुनै पनि कुराको व्याख्या गरिने छैन ।

**धारा ४७**

आफ्ना प्राकृतिक सम्पत्ति तथा स्रोतहरुको पूर्ण र स्वतन्त्रतापूर्वक उपभोग तथा प्रयोग गर्ने सवै जनताहरुको अन्तरनिहित अधिकारलाई आघात पार्ने गरी प्रस्तुत प्रतिज्ञापत्रको कुनै पनि कुराको व्याख्या गरिने छैन ।

**भाग ६**

**धारा ४८**

१. प्रस्तुत प्रतिज्ञापत्र संयुक्त राष्ट्र संघको सदस्य राष्ट्र तथा यसका कुनै विशिष्टिकृत निकायको सदस्य, अन्तर्राष्ट्रिय न्यायालयको विधानको पक्ष राष्ट्र तथा संयुक्त राष्ट्र संघको महासभाले प्रस्तुत प्रतिज्ञापत्रको पक्ष हुन आमन्त्रण गरेको अन्य कुनै पनि राष्ट्रबाट हस्ताक्षर हुनका लागि खुला रहनेछ ।

२. प्रस्तुत प्रतिज्ञापत्रलाई अनुमोदन गर्नु पर्नेछ । अनुमोदनका लिखतहरु संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला गरिनेछ ।

३. प्रस्तुत प्रतिज्ञापत्र यस धाराको प्रकरण १ बमोजिमको कुनै पनि राष्ट्रवाट सम्मिलन हुनका लागि खुला रहनेछ ।

४. सम्मिलनको लिखत संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला भएपछि सम्मिलन प्रभावकारी हुनेछ ।

५. संयुक्त राष्ट्र संघका महासचिवले प्रस्तुत प्रतिज्ञापत्रमा हस्ताक्षर गरेका वा यसमा सम्मिलित भएका सबै राष्ट्रहरुलाई अनुमोदन वा सम्मिलनको प्रत्येक लिखत दाखिला भएको कुराको जानकारी दिनेछन् ।

**धारा ४९**

१. अनुमोदन वा सम्मिलनको पैतीसौं लिखत संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला भएको मितिले तीन महिना देखि प्रस्तुत प्रतिज्ञापत्र लागू हुनेछ ।

२. अनुमोदन वा सम्मिलनको पैतीसौं लिखत दाखिला भएपछि प्रस्तुत प्रतिज्ञापत्रको अनुमोदन वा सम्मिलन गर्ने प्रत्येक राष्ट्रको हकमा सो राष्ट्रले आफ्नो अनुमोदन वा सम्मिलनको लिखत दाखिला गरेको मितिले तीन महिना देखि प्रस्तुत प्रतिज्ञापत्र लागू हुनेछ ।

**धारा ५०**

प्रस्तुत प्रतिज्ञापत्रका व्यवस्थाहरु संघीय राष्ट्रका सबै भागहरुमा कुनै सीमा वा अपवाद विना विस्तार हुनेछन् ।

**धारा ५१**

१. प्रस्तुत प्रतिज्ञापत्रको कुनै पनि पक्ष राष्ट्रले संशोधन प्रस्ताव गर्न र सो संशोधन संयुक्त राष्ट्र संघका महासचिव समक्ष दर्ता गर्न सक्नेछ । महासचिवले सो प्रस्ताव उपर विचार एवं मतदान गर्ने उद्देश्यले पक्ष राष्ट्रहरुको सम्मेलन गर्ने पक्षमा उनीहरु भए नभएको कुराको सूचना निजलाई दिने अनुरोध सहित प्रस्तावित संशोधन पक्ष राष्ट्रहरुलाई पठाउने छन् । कम्तिमा एक तिहाई पक्ष राष्ट्रहरु त्यस्तो सम्मेलनको पक्षमा भएमा महासचिवले संयुक्त राष्ट्र संघको तत्वावधानमा सो सम्मेलनको आयोजना गर्नेछन् । महासचिवले सो सम्मेलनमा उपस्थित भई मतदान गर्ने पक्ष राष्ट्रहरुको बहुमतबाट ग्रहण गरिएको कुनै पनि संशोधन स्वीकृतिका लागि संयुत्त राष्ट्र संघको महासभा समक्ष पेश गर्नेछन् ।

२. संयुक्त राष्ट्र संघको महासभाबाट स्वीकृत भएपछि र प्रस्तुत प्रतिज्ञापत्रका पक्ष राष्ट्रहरुको दुई तिहाई बहुमतबाट आ-आफ्ना संवैधानिक प्रक्रिया अनुसार स्वीकृत भए पछि संशोधनहरु लागू हुनेछन् ।

३. संशोधनहरु लागू भएपछि ती संशोधनहरु स्वीकार गर्ने पक्ष राष्ट्रहरुका हकमा वाध्यात्मक हुनेछन् भने अन्य पक्ष राष्ट्रहरुका हकमा प्रस्तुत प्रतिज्ञापत्रका व्यवस्थाहरु तथा उनीहरुले स्वीकार गरेका कुनै पनि अघिल्ला संशोधनहरु बाध्यात्मक हुनेछन् ।

**धारा ५२**

धारा ४८ को प्रकरण ५ अन्तर्गत सूचना दिईएको भए तापनि संयुक्त राष्ट्र संघका महासचिवले सोही धाराको प्रकरण १ मा उल्लिखित सबै राष्ट्रहरुलाई देहायका विवरणहरुको जानकारी दिनेछन्:

(क) धारा ४८ अन्तर्गतका हस्ताक्षर, अनुमोदन र सम्मिलनहरु,

(ख) धारा ४९ अन्तर्गत प्रस्तुत प्रतिज्ञापत्र लागू हुने मिति र धारा ५१ अन्तर्गत संशोधनहरु लागू हुने मिति ।

**धारा ५३**

१. अरवी, चीनीया, अंग्रेजी, फ्रान्सेली, रसियाली र स्पेनी भाषाका प्रतिहरु समान रुपले प्रामाणिक हुने प्रस्तुत प्रतिज्ञापत्र संयुक्त राष्ट्र संघको अभिलेखालयमा दाखिला गरिनेछ ।

२. संयुक्त राष्ट्र संघका महासचिवले धारा ४८ मा उल्लिखित सबै राष्ट्रहरुलाई प्रस्तुत प्रतिज्ञापत्रका प्रमाणित प्रतिहरु पठाउने छन् ।